# कसरी मूल्याङ्कन गर्ने नेपालका पुराना र कथित नयाँ राजनीतिक पार्टीहरुलाई ?

**कसरी मूल्याङ्कन गर्ने नेपालका पुराना र कथित नयाँ राजनीतिक पार्टीहरुलाई ?**

कसरी मूल्याङ्कन गर्ने परम्परागत कांग्रेस, कम्युनिस्ट, पूर्वपञ्च, कथित मधेशवादी, कथित जनजातिवादी आदि इत्यादि र कथित नयाँ (जस्तै : "विवेकशील नेपाली पार्टी", डा. बाबुराम भट्टराई नेतृत्वमा रहेको "नयाँ शक्ति" आदि इत्यादि) राजनीतिक पार्टीहरुलाई ?

नेपाली कांग्रेस लगायतका सबै कांग्रेसी घटकहरू, नेकपा (एमाले) र माओवादी लगायतका सबै कम्युनिस्ट घटकहरू, राप्रपा र राप्रपा नेपाल लगायतका सबै पूर्वपञ्च घटकहरू तथा अन्य पनि राजावादीहरु, कथित मधेशवादीहरू, कथित जनजातिवादीहरू असफल, गतार्थ (आउट् डेटेड्) तथा असान्दर्भिक भइसकेका छन् भन्नका लागि ठूलो तर्क गरिरहनु पर्दैन । किनभने अहिले देशको स्थिति के छ भन्ने त हाम्रो सामु प्रत्यक्ष छँदैछ । सङ्कटै सङ्कटको सङ्क्रमणकालबाट गुज्रिँदै गर्दा वर्तमान नेपालको दुरावस्थाले हामी सबैलाई पीडित बनाइरहेको छ । हिंसा, अराजकता, हाहाकार !! घृणा, द्वेष, वैमनस्य !! असुरक्षा, अशान्ति, त्राहीत्राही, रोदन, चित्कार !! भ्रस्टाचार, तस्करी, कालाबजारी, महङ्गी !! बेरोजगारी, पलायन, निराशा !! गरिबी, रोग, भोक, शोक !! विकृति, विसङ्गति, पापाचार !! अन्याय, अत्याचार, शोषण, दमन, असमानता !! को हो दोषी ? सबै नै पटक पटक सत्तामा पुगे तथा अहिले पनि सत्तासीन वा सत्ताकांक्षी छन्, तिनीहरु नै दोषी हुन् । पटक पटक सत्तारुढ भएका हैनन् र यिनै ? पटक पटक सत्ता पाउँदा बेइमानी गर्ने यिनै हैनन् र ? कसको परीक्षण हुन बाँकी छ अब ? अब पनि तिनीहरूको हातमै यो देशको जिम्मेवारी रहिरहनु दुर्भाग्यको पनि पराकाष्ठा हुने छर्लङ्ग भइसकेको छ । यस्तो बेलामा अब नेपालमा नयाँ राजनीतिक विकल्प चाहियो भनेर प्रयत्न हुनु वाञ्छनीय नै हो । त्यस्ता प्रयत्नहरु विभिन्न रुपमा प्रकटित भएका छन् । डा. निर्मलमणि अधिकारीको आह्वानमा खडा हुँदै गरेको "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" (The Root and Locus Movement), उज्वल थापाको नेतृत्वमा रहेको "विवेकशील नेपाली पार्टी" (विनेपा) तथा डा. बाबुराम भट्टराईको "नयाँ शक्ति" केही प्रमुख उदाहरण हुन्, जसमध्ये "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" अहिले अभियानको रुपमा खडा भइरहेको छ भने बाँकी दुईवटाले निर्वाचन आयोगमा दर्ता गरी औपचारिक तवरले नै राजनीतिक दल (पार्टी) का रुपमा आकार लिइसकेका छन् । ती दुईवटा दललाई कसरी मूल्याङ्कन गर्ने त ? तिनीहरूका दार्शनिक मान्यता, सिद्धान्त, वाद, रणनीति, कार्यनीति आदिको परीक्षण जरो र किलोको कसीमा गरौं । तब छर्लङ्ग हुनेछ कि अब नेपालको नीति र नेतृत्वका लागि उनीहरू उपयुक्त वा अनुपयुक्त के छन् । डा. बाबुराम भट्टराईको "नयाँ शक्ति" लाई निजको विगतबाट अलग राखेर हेर्न मिल्दैन ।

देश बिग्रनुमा उनको ठूलै हिस्सा छ र डा. भट्टराई पनि हिजो सत्तारुढ अन्य शासकहरुझैँ नै ढिलो वा चाँडो दण्डित हुनै पर्छ । यो निजी विशेषताको अलावा विनेपा र कथित नयाँ शक्ति उस्तै विशेषता भएका, तर अलग अलग तरिकाले संरचित पार्टीहरु हुन् । विनेपा र कथित नयाँ शक्ति दुइटैले जेलाई मार्गदर्शक मान्छन्, सो दार्शनिक मान्यता, सिद्धान्त, वादमा नेपालको मौलिक रैथाने विश्वदृष्टिकोण (वल्र्डभ्यू) छ ? छैन किनभने ती दुइटै वास्तवमा सुधारवादी/संशोधनवादी पूँजीवादका अनुयायी हुन् । विनेपा र कथित नयाँ शक्तिका हालसम्म सार्वजनिक दस्ताबेज हेर्दा तिनीहरु अवधारणाको दृष्टिकोणबाट सुधारवादी/संशोधनवादी पूँजीवादका अनुयायी र व्यावहारिक दृष्टिकोणबाट कम्युनिष्ट र पूँजीवादी सोचको घालमेलबाट पैदा हुने "कपू"–संयन्त्रका थप दुई थान खेलाडी मात्र हुन् भन्ने तथ्य नै उजागर भएको छ ।

तात्पर्य के हो भने नामपट्ट (साइनबोर्ड) र नेता मात्र फरक फरक हुन्, तर सारमा चाहिँ विनेपा र कथित नयाँ शक्ति पनि नेपाली कांग्रेस लगायतका सबै कांग्रेसी घटकहरू, नेकपा (एमाले) र एनेकपा (माओवादी) लगायतका सबै कम्युनिस्ट घटकहरू, राप्रपा र राप्रपा नेपाल लगायतका सबै पूर्वपञ्च घटकहरू तथा अन्य पनि राजवादीहरु, कथित मधेशवादीहरू, कथित जनजातिवादीहरूकै ड्याङ्मा उम्रेका र हुर्किँदै गरेका वा प्रयत्नरत उपक्रम मात्र हुन् । "हाम्रो पार्टी" नामक पार्टी (डा. रुद्र पाण्डेको नेतृत्वमा रहेको भनी प्रचारित) पनि विनेपा र कथित नयाँ शक्ति झैँ नै अवधारणाको दृष्टिकोणबाट सुधारवादी÷संशोधनवादी पूँजीवादको अनुयायी हो र त्यो पार्टी पनि व्यावहारिक दृष्टिकोणबाट कम्युनिष्ट र पूँजीवादी सोचको घालमेलबाट पैदा हुने "कपू"–संयन्त्रका थप एक थान खेलाडी बन्ने महत्वाकांक्षाले पैदा भएको देखिन्छ ।

परम्परागत कांग्रेस, कम्युनिस्ट, पूर्वपञ्च, कथित मधेशवादी, कथित जनजातिवादी आदि इत्यादिको विकल्प बनेर उज्वल थापाको नेतृत्वमा रहेको "विवेकशील नेपाली पार्टी" (विनेपा), डा. बाबुराम भट्टराई नेतृत्वमा रहेको कथित "नयाँ शक्ति", डा. रुद्र पाण्डेको नेतृत्वमा रहेको भनी प्रचारित "हाम्रो पार्टी" नामक पार्टी वा यस्तै यस्तै नामपट्ट (साइनबोर्ड) र नेता मात्र अर्कै अर्कै भएका, तर सारमा चाहिँ सुधारवादी/संशोधनवादी पूँजीवादका अनुयायी तथा कम्युनिष्ट र पूँजीवादी घालमेलबाट पैदा हुने "कपू"–संयन्त्रका थप विस्तारका रुपमा कार्यरत पार्टीहरु सफल भए भने त्यसबाट क्षणिक राहत भइहाल्यो भने तापनि तात्त्विक परिवर्तन भने हुनेछैन । नेपालका लागि सान्दर्भिक एवं उपयुक्त ती शक्ति मात्र ठहरिन्छन् जसको दार्शनिक मान्यता, सिद्धान्त, वाद, रणनीति, कार्यनीति सबैको जरो र किलो नेपालमा रहेको छ । तसर्थ, अहिले नेपाललाई चाहिएकोचाहिँ "जरो" र "किलो" दुवै नेपालमै भएको मौलिक रैथाने शक्ति हो ।

विज्ञानको बुद्धि प्रविधिको प्रगति ।
धर्मको विवेक सहृदयताको सम्बन्ध ।।
विकास न्याय स्वाधीनता समृद्धिमा नेपालको ।
सहृदयी तराइ मधेश पहाड र हिमालको ।।

"वैज्ञानिक सत्ययुग" को लक्ष्यसहित स्थापना भएको एक महाअभियान हो "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" । सम्प्रति बृहत्तर कार्यक्षेत्र भएको यो महाअभियान उपयुक्त समयमा निर्वाचनमा भाग लिने एवं निर्वाचनमार्फत् जनअनुमोदन हासिल गरी राज्यसत्ता सञ्चालन गर्ने राजनीतिक संस्था (पार्टी/दल) का रूपमा अगाडि आउनेछ ।

नेपाललाई वर्तमान सङ्कटको सङ्क्रमणबाट मुक्त गराउने, विश्वका विकसित देशहरुको समूहमा पुर्याउने र अन्ततोगत्वा नेपाललाई नयाँ वैश्विक संरचनाको अग्रणी एवं केन्द्र बनाउने "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को उद्देश्य हो । विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्ध "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" का आधारशिला चतुष्टय (अर्थात्, चारवटा मुख्य आधार) हुन् ।

"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले विशिष्ट रूपमा "राज्यराष्ट्र" सिद्धान्तमार्फत् नेपाली राष्ट्रियताको अद्यावधिक व्याख्या गरेर बृहत्तर राष्ट्रिय एकताको सहृदयतावादी राजनीतिक ढाँचा प्रस्तुत गरेको छ ।

"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति"